# नागरिक अधिकार ऐन, २०१२

| लालमोहर सदर मिति | नेपाल राजपत्रमा प्रकाशित मिति |
| --- | --- |
| २०१२।७।१८ | २०१२।८।१३ |

| संशोधन गर्ने | लालमोहर मिति | प्रकाशन मिति |
| --- | --- | --- |
| १. विदेशीहरू सम्बन्धी ऐन, २०१५ | २०१५।१।१६ | २०१५।२।२० |
| २. केही नेपाल कानुन (संशोधन र पुनः व्यवस्थापन) ऐन, २०२० | २०२०।११।१६ | २०२०।११।१६ |
| ३. नागरिक अधिकार (पहिलो संशोधन) ऐन, २०३५ | २०३५।७।८।४ | २०३५।७।८ |
| ४. न्याय प्रशासन ऐन, २०४८ | २०४८।२।१६ | २०४८।२।१६ |
| | | **प्रमाणीकरण र नेपाल राजपत्रमा प्रकाशन मिति** |
| [1]५. गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६ | | २०६६।१०।७ |
| ६. न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐनलाई संशोधन गर्न बनेको ऐन, २०६७ | | २०६७।१२।१५ |

**२०१२ सालको ऐन नं. १२**

[2]… … …



## जनतालाई नागरिक अधिकार दिएको ऐन

जनतालाई नागरिक अधिकार प्रदान गर्न र सो लागू गर्नको लागि कार्यविधि तयार गर्नु परेकोले श्री ५ महाराजाधिराजबाट यो ऐन बनाई जारी गरिबक्सेकोछ ।

१. **संक्षिप्त नाम, विस्तार र प्रारम्भ** : (१) यो ऐनको नाम "नागरिक अधिकार ऐन, २०१२" रहेकोछ ।

(२) यो ऐन नेपालभर लागू हुनेछ ।

---

१ यो ऐन संवत् २०६५ साल जेठ १५ गतेदेखि लागू भएको ।

२ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६ द्वारा झिकिएको ।

(३) यो ऐन तुरुन्त लागू हुनेछ ।

[३]२. **परिभाषा** : यस ऐनमा "नागरिक" भन्नाले [४]नेपालको अन्तरिम संविधान, २०६३ र नेपाल नागरिकता ऐन, २०६३ बमोजिमको नेपालको नागरिकलाई सम्झनु पर्छ ।

[५]३. **कानुनको दृष्टिमा समानता** : प्रचलित नेपाल कानुनको अधीनमा रही कानुनको अगाडि समानता र कानुनको समान संरक्षण कुनै नागरिकलाई पनि इन्कार गरिने छैन ।

[६]४. **धर्म, जात, जाति वा लिङ्गको आधारमा भेदभाव नगर्ने** : कुनै सरकारी पदमा नियुक्ति गर्दा नेपाल सरकारले योग्यताको आधारमा मात्र नियुक्ति गर्नेछ र सरकारी सेवा वा अरू कुनै सार्वजनिक सेवाको नियुक्तिमा कुनै पनि नागरिक माथि केवल धर्म, वर्ण, लिङ्ग, जात, जाति वा ती मध्ये कुनै कुराको आधारमा भेदभाव गरिने छैन ।

५. **कुनै विशेष वर्गको निमित्त विशेष व्यवस्था गर्ने नेपाल सरकारको अधिकार** : माथि दफा ३ र ४ मा जेसुकै लेखिएको भएतापनि-

(क) स्त्री जाति बालकवर्ग र कुनै अनुन्नत नागरिकवर्गको लागि विशेष व्यवस्था गर्ने नेपाल सरकारलाई अधिकार हुनेछ ।

(ख) धर्म, गुठी, सदावर्त इत्यादिको हकमा प्रचलित ऐन नियम रीतिथिति बमोजिम हुनेछ, यसमा कसैले हस्तक्षेप गर्न हुँदैन ।

६. **वाक् स्वतन्त्रता इत्यादि सम्बन्धी अधिकार** : [७]प्रचलित नेपाल कानुनको अधीनमा रही सबै नागरिकहरूलाई देहायका अधिकारहरू हुनेछन् :-

(१) वाक् र प्रकाशन स्वतन्त्रता ।

(२) शान्तिपूर्वक र विना हतियारको सम्मेलन सभा गर्ने ।

(३) संस्था वा संघ खडा गर्ने ।

(४) नेपाल राज्यभर बिना रोकटोक घुमफिर गर्ने ।

---

[३] केही नेपाल कानुन (संशोधन र पुनः व्यवस्थापन) ऐन, २०२० द्वारा संशोधित ।

[४] गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६ द्वारा संशोधित ।

[५] केही नेपाल कानुन (संशोधन र पुनः व्यवस्थापन) ऐन, २०२० द्वारा संशोधित ।

[६] केही नेपाल कानुन (संशोधन र पुनः व्यवस्थापन) ऐन, २०२० द्वारा संशोधित ।

[७] केही नेपाल कानुन (संशोधन र पुनः व्यवस्थापन) ऐन, २०२० द्वारा संशोधित ।

(५) नेपाल राज्यभर जुनसुकै भागमा पनि निवास गर्ने र घरजम गर्ने ।

(६) सम्पत्ति आर्जन गर्ने, भोग गर्ने, बेचबिखन गर्ने ।

(७) कुनै पेशा, रोजगार, उद्योग वा व्यापार गर्ने ।

७. **धर्म सम्बन्धी हक** : [८]प्रचलित नेपाल कानुनबमोजिम बाहेक कुनै धार्मिक सम्प्रदायको देहायका हकहरूमा कसैले हस्तक्षेप गर्न हुँदैनः-

(क) धार्मिक र गुठी सदावर्त संस्थाहरू कायम गर्ने चलाउने ।

(ख) धर्म सम्बन्धी र सामाजिक संसर्ग (सोसल इन्टरकोर्स) को लागि आफ्नो व्यवस्था गर्ने ।

(ग) सम्पत्ति जम्मा गर्ने, आफ्नो नाउँमा राख्ने र प्रचलन गर्ने ।

८. **कानुनको अख्तियार बिना कुनै कर नलगाउने** : कुनै कर कानुनको अख्तियार बिना लगाइने वा असूल गरिने छैन ।

९. **सम्पत्ति सम्बन्धी अधिकार** : [९]प्रचलित नेपाल कानुनको अख्तियार बिना कुनै व्यक्तिको सम्पत्ति अपहरण गरिने छैन ।

१०. **नागरिकको बासस्थानको रक्षा** : [१०]प्रचलित नेपाल कानुनको अख्तियार बिना कुनै नागरिकको बासस्थानमा जबर्जस्ती प्रवेश गर्न हुँदैन ।

११. **अपराध ठहर भएमा हुने सजाय बारे** : [११](१) कुनै व्यक्तिलाई पनि तत्काल प्रचलित नेपाल कानुनले सजाय नहुने कुनै काम गरे वापत कुनै सजाय हुने छैन र कसूर गर्दाको अवस्थामा प्रचलित नेपाल कानुनमा तोकिएभन्दा बढी सजाय दिइने छैन ।

(२) कुनै व्यक्ति उपर एकै अपराधमा एक पटकभन्दा बढ्ता मुद्दा चलाइने र दण्ड सजाय गरिने छैन ।

(३) कुनै अपराधको बात लागेको मानिसलाई आफ्नो विरुद्ध साक्षी हुन कर लाग्ने छैन ।

---

[८] केही नेपाल कानुन (संशोधन र पुनः व्यवस्थापन) ऐन, २०२० द्वारा संशोधित ।

[९] केही नेपाल कानुन (संशोधन र पुनः व्यवस्थापन) ऐन, २०२० द्वारा संशोधित ।

[१०] केही नेपाल कानुन (संशोधन र पुनः व्यवस्थापन) ऐन, २०२० द्वारा संशोधित ।

[११] केही नेपाल कानुन (संशोधन र पुनः व्यवस्थापन) ऐन, २०२० द्वारा संशोधित ।

[१२]१२. **<u>वैयक्तिक स्वतन्त्रता</u>** : प्रचलित नेपाल कानुनबमोजिम बाहेक कुनै पनि व्यक्तिको ज्यान वा वैयक्तिक स्वतन्त्रता हरिने छैन ।

[१३]१३. **<u>इच्छाविरुद्ध काम गराउन मनाही</u>** : प्रचलित नेपाल कानुनबमोजिम बाहेक कसैले कुनै मानिसलाई उसको इच्छा विरुद्ध काम गराउन हुँदैन ।

१४. **<u>नाबालकलाई फेक्टरी इत्यादिमा काम लगाउनमा निषेध</u>** : चौध वर्षभन्दा कम उमेरका कुनै बालकलाई पनि कुनै कारखाना वा खानीको काममा लगाउन वा अरू कुनै जोखिमी काममा भर्ना गर्न हुँदैन ।

१५. **<u>गिरफ्तारीका सम्बन्धमा बचाउ</u>** : (१) प्रचलित नेपाल कानुनले अन्यथा हुनेमा बाहेक गिरफ्तार भएको व्यक्तिलाई :-

(क) गिरफ्तारीका कारण सहितको सूचना यथाशक्य चाँडो नदिई थुनामा राखिने छैन ।

(ख) आफूले रोजेको कानुनी व्यवसायी वा कानुन बमोजिमको वारिससँग सल्लाह लिने र निजद्वारा पूर्पक्ष गर्ने अधिकारबाट बञ्चित गरिने छैन ।

(२) प्रचलित नेपाल कानुनले अन्यथा हुनेमा बाहेक गिरफ्तार गरिएको र थुनामा राखिएको प्रत्येक व्यक्तिलाई बाटोको म्याद बाहेक २४ घण्टा भित्र मुद्दा हेर्ने अधिकारीका समक्ष उपस्थित गराउनु पर्छ र कुनै पनि व्यक्तिलाई त्यस्तो अधिकारीको आदेशले बाहेक सो अवधि भन्दा बढी थुनामा राख्नु हुँदैन ।

(३) उपदफा (१) र उपदफा (२) मा जुनसुकै कुरा लेखिएको भए तापनि शत्रु राज्यको नागरिक वा निवारक नजरबन्द राख्ने व्यवस्था गर्ने कुनै कानुन अन्तर्गत गिरफ्तार भएको वा नजरबन्द रहेको व्यक्तिलाई सो उपदफाहरू अन्तर्गतको कुनै अधिकार प्राप्त हुने छैन ।

[१४]१६. **<u>ऐन विरुद्ध थुनामा परेमा गर्ने उपाय</u>** : [१५](१) गिरफ्तार भएको वा थुनिएको व्यक्ति आफैंले वा अरु कसै मार्फत् बन्दीप्रत्यक्षीकरणको आदेशको निमित्त सम्बन्धित पुनरावेदन अदालत वा जिल्ला अदालतमा उजुरी दिन सक्नेछ ।

---

[१२] केही नेपाल कानुन (संशोधन र पुनः व्यवस्थापन) ऐन, २०२० द्वारा संशोधित ।

[१३] केही नेपाल कानुन (संशोधन र पुनः व्यवस्थापन) ऐन, २०२० द्वारा संशोधित ।

(२) उपदफा (१) बमोजिमको उजूरीमा सम्बन्धित अदालतले ठाडो जाँचबुझ गरी प्रचलित कानुनको अख्तियार बिना थुनिएको ठहरिन आएमा त्यसरी गिरफ्तार भएको वा थुनिएको व्यक्तिलाई कानुनबमोजिम छाड्ने आदेश मात्र दिन सक्नेछ ।

[१६]**१७. ऐनद्वारा प्रदत्त अधिकारहरू दावी गर्ने अरू उपाय** : [१७](१) यस ऐनद्वारा प्रदत्त आफ्नो कुनै अधिकारमा कसैले आघात गर्ने शङ्का लागेमा सम्बन्धित पुनरावेदन अदालत वा जिल्ला अदालतमा उजुरी दिन सकिनेछ ।

(२) उपदफा (१) बमोजिमको उजुरीमा सम्बन्धित अदालतले जाँचबुझ गरी प्रतिवादीलाई सो नगर्नु भनी निषेधाज्ञा दिन सक्नेछ ।

(३) कसैले कसैको यस ऐनद्वारा प्रदत्त अधिकारमा आघात गरेमा अवस्था हेरी सम्बन्धित अदालतले ठहर गरे बमोजिमको क्षतिपूर्ति अधिकार आघात भएको व्यक्तिलाई दिनु पर्नेछ ।

**१८. नेपाल सरकार उपर मुद्दा चलाउने अधिकार** : यदि ठेक्का पट्टामा अरू कुनै अधिकारीबाट झगडा निपटारा गर्ने व्यवस्था गरिएको छैन भने नेपाल सरकारसँगको ठेक्का सम्बन्धी हकमा बाधा विरोध भएमा सो हक प्रचलन गराई पाउँ र दफा ८ वा ९ को विरुद्ध नेपाल सरकारले कुनै नागरिकको चल अचल सम्पत्ति अपहरण गरेमा वा नोक्सान पारेमा सो नागरिकले नेपाल सरकार उपर हर्जाना वा हर्जाना सहित आफ्नो सम्पत्ति फिर्ता पाउँ भनी [१८]पुनरावेदन अदालतमा नालेश उजुर गर्न सक्छ ।

तर कुनै सरकारी कर्मचारीले गरेको अनधिकृत (टरसस) कामको निम्ति नेपाल सरकारले क्षतिपूर्ति दिने छैन ।

**१९. मुद्दाको सूचना** : नेपाल सरकार उपर या सरकारी काम काजमा कुनै सरकारी कर्मचारी उपर कुनै किसिमको मुद्दा दायर गर्दा २ महीना अगावै देहाय बमोजिम सो कर्मचारीलाई या सम्बन्धित कार्यालयमा लिखित सूचना बुझाउनु वा हुलाकद्वारा रजिष्टरी गरी पठाउनु पर्छ ।

---

[१४] पहिलो संशोधनद्वारा संशोधित ।

[१५] न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐनलाई संशोधन गर्न बनेको ऐन, २०६७ द्वारा संशोधित ।

[१६] पहिलो संशोधनद्वारा संशोधित ।

[१७] न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐनलाई संशोधन गर्न बनेको ऐन, २०६७ द्वारा संशोधित ।

[१८] केही नेपाल कानुन (संशोधन र पुनः व्यवस्थापन) ऐन, २०२० द्वारा संशोधित ।

(१) नेपाल सरकार विरुद्ध मुद्दा चलाउनु परेमा [१९]नेपाल सरकारको सचिव, र

(२) सरकारी कर्मचारी उपर मुद्दा चलाउनु परेमा सोही सरकारी कर्मचारी, सो सूचनामा उजूरवालाले नाम, थर, वतन मुद्दा गर्नु पर्ने कारण र कुन कुराको दाबी गर्छ, सो समेत खोली दिनु पर्दछ ।

[२०]**२०. मुद्दा चलाउने हदम्याद** : दफा १७ र १८ मा लेखिएका कलमहरूमा मुद्दा चलाउनु पर्ने कारण भएको मितिले आठ महीनाभित्र उजुर नगरे कुनै अदालतमा त्यस्तो मुद्दा चल्न सक्ने छैन ।

**२१.** [२१]... ... ...

**२२.** व्यक्तिगत स्वतन्त्रताको ऐन, २००६ खारेज गरिएको छ ।



---

१९ केही नेपाल कानुन (संशोधन र पुनः व्यवस्थापन) ऐन, २०२० द्वारा संशोधित ।

२० पहिलो संशोधनद्वारा संशोधित ।

२१ विदेशीहरू सम्बन्धी ऐन, २०१५ द्वारा खारेज ।

**द्रष्टव्य** :- १. नेपाल अन्तरिम शासन विधान (चौथो संशोधन) ऐन, २०१५ द्वारा रूपान्तर गरिएका शब्दहरू:-
"सरकार" को सट्टा "श्री ५ को सरकार" ।

२. नेपाल कानुन (संशोधन) ऐन, २०२४ द्वारा रूपान्तर गरिएका शब्दहरू:-
(क) "अपील" को सट्टा "पुनरावेदन"
(ख) "अफिस" को सट्टा "कार्यालय" ।